# उच्च माध्यमिक शिक्षा ऐन, २०४६

लालमोहर र प्रकाशन मिति

२०४६।७।११

**संशोधन गर्ने ऐन**

| | | |
|---|---|---|
| १. | उच्च माध्यमिक शिक्षा (पहिलो संशोधन) ऐन, २०४७ | २०४७।६।४ |
| २. | उच्च माध्यमिक शिक्षा (दोस्रो संशोधन) ऐन, २०४९ | २०५०।२।२० |
| ३. | शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ | २०६३।९।१४ |
| ◉४. | गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ | २०६६।१०।७ |

२०४६ सालको ऐन नं. २१

**उच्च माध्यमिक शिक्षाको व्यवस्था गर्ने बनेको ऐन**

**प्रस्तावना** : ∝......सर्वसाधारण जनताको सदाचार, शिष्टता र नैतिकता कायम राख्न, ज्ञान विज्ञान, सीप आदि विभिन्न क्षेत्रमा विस्तार गर्दै लैजानका लागि जनसहभागिता परिचालन गरी गुणस्तरयुक्त मध्यम स्तरीय जनशक्तिको उत्पादन एवं उच्च शिक्षा प्रवेशका निमित्त पूर्वाधारका रूपमा हाल प्रचलनमा रहेको दश वर्षे विद्यालय शिक्षामा दुई वर्षको एक शैक्षिक तह थप गरी उच्च माध्यमिक शिक्षाको तह सिर्जना गर्न र यस तहको शिक्षाको स्वरूप, स्तर, संचालन र नियन्त्रणको समेत व्यवस्था गर्न वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवबाट राष्ट्रिय पञ्चायतको सल्लाह र सम्मतिले यो ऐन बनाइबक्सेको छ।

## १. संक्षिप्त नाम र प्रारम्भ :

१.१ यस ऐनको नाम "उच्च माध्यमिक शिक्षा ऐन, २०४६" रहेको छ।

---

◉ यो ऐन संवत् २०६५ साल जेठ १५ गतेदेखि लागू भएका प्रशस्ती र अधिराज्य शब्द झिकिएको।

∝ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा झिकिएको।

१.२ यो ऐन नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकेको क्षेत्रमा तोकेको मितिदेखि प्रारम्भ हुनेछ ।•

२. **परिभाषा** :

२.१ "उच्च माध्यमिक शिक्षा" भन्नाले कक्षा एघार र बाह्रमा दिइने शिक्षा सम्झनुपर्छ ।

२.२ "उच्च माध्यमिक विद्यालय" भन्नाले उच्च माध्यमिक शिक्षा दिने विद्यालय सम्झनुपर्छ ।

२.३ "उच्च माध्यमिक शिक्षा परीक्षा (हाइयर सेकेण्डरी एजुकेशन एक्जामिनेशन)" भन्नाले उच्च माध्यमिक शिक्षाको अन्त्यमा हुने परीक्षा सम्झनुपर्छ ।

♦२.३क. "सभा" भन्नाले दफा ४क. बमोजिम गठित उच्च माध्यमिक शिक्षा सभा सम्झनुपर्छ ।

२.४ "परिषद्" भन्नाले दफा ५ बमोजिम गठित उच्च माध्यमिक शिक्षा परिषद् (हाइयर सेकेण्डरी एजुकेशन बोर्ड) सम्झनुपर्छ ।

२.५ "तोकिएको" वा "तोकिएबमोजिम" भन्नाले यस ऐन अन्तर्गत बनेको नियम वा विनियममा तोकिएको वा तोकिएबमोजिम सम्झनुपर्छ ।

♠३. **उच्च माध्यमिक शिक्षा दिने विद्यालयले सम्बन्धन प्राप्त गर्नु पर्ने** :

३.१ नेपाल सरकारबाट स्वीकृति प्राप्त माध्यमिक विद्यालयले तोकिएको शर्त पालन गरेमा +जिल्ला शिक्षा समिति र शिक्षा विभागको सिफारिसमा परिषद्ले त्यस्तो माध्यमिक विद्यालयलाई उच्च माध्यमिक शिक्षा दिने विद्यालयको रूपमा सम्बन्धन प्रदान गर्न सक्नेछ ।

३.२ उच्च माध्यमिक शिक्षा सञ्चालन गर्न चाहने कुनै व्यक्ति वा संस्थाले तोकिएको शर्त पालन गरेमा त्यस्तो व्यक्ति वा संस्थाद्वारा उच्च माध्यमिक शिक्षा दिनको



---

• मिति २०४६ फाल्गुण १२ गते देखि प्रारम्भ हुने गरी तोकिएको । (ने.रा.प. २०४६।११।८)

♦ दोस्रो संशोधनद्वारा थप ।

♠ दास्रो संशोधनद्वारा संशोधित ।

+ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।

लागि स्थापना गरिने विद्यालयलाई +जिल्ला शिक्षा समिति र शिक्षा विभागको सिफारिसमा परिषद्ले सम्बन्धन प्रदान गर्न सक्नेछ ।

४. **उच्च माध्यमिक विद्यालयको सञ्चालन** : उच्च माध्यमिक विद्यालयको संचालन तोकिए बमोजिम हुनेछ ।

♦४क. **उच्च माध्यमिक शिक्षा सभाको गठन** :

४क.१ उच्च माध्यमिक विद्यालयबाट दिइने शिक्षाको गुणस्तरको वृद्धि गर्ने र त्यस्ता विद्यालयहरू बीच समन्वय कायम गर्ने सम्बन्धमा नीति निर्धारणको लागि एक उच्च माध्यमिक शिक्षा सभाको गठन हुनेछ ।

४क.२ उपदफा ४क.१ बमोजिमको सभामा देहाय बमोजिमका सदस्यहरू रहनेछन्:-

| | | |
|---|---|---|
| ∇४क.२.१ | शिक्षा तथा खेलकुद मन्त्री वा राज्यमन्त्री | - अध्यक्ष |
| +४क.२.१क | शिक्षाविद्हरूमध्येबाट नेपाल सरकारले मनोनीत गरेको व्यक्ति | - उपाध्यक्ष |
| ४क.२.२ | ∝..... | |
| ४क.२.३ | ✂... ... ... | |
| ४क.२.४ | ✂... ... ... | |
| ४क.२.५ | सदस्य, राष्ट्रिय योजना आयोग (शिक्षा हेर्ने) | - सदस्य |
| ४क.२.६ | सचिव, शिक्षा, संस्कृति तथा समाज कल्याण मन्त्रालय | - सदस्य |
| ४क.२.७ | सचिव, अर्थ मन्त्रालय | - सदस्य |



\+ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।

∇ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधन ।

\+ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।

∝ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा झिकिएको ।

✂ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

✂ गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानुन संशोधन गर्ने ऐन, २०६६ द्वारा झिकिएको ।

४क.२.८ कानुन बमोजिम स्थापित विश्वविद्यालयका उपकुलपतिहरू - सदस्य

४क.२.९ सम्बन्धन प्राप्त उच्च माध्यमिक विद्यालयका प्राधानाध्यापकहरूमध्येबाट नेपाल सरकारले मनोनित गरेका पाँचजना - सदस्य

४क.२.१० नेपाल प्राध्यापक संघको प्रतिनिधि एकजना - सदस्य

४क.२.११ मान्यता प्राप्त शिक्षक संघ संगठनहरूका सभापतिहरू मध्येबाट नेपाल सरकारले मनोनित गरेका दुईजना - सदस्य

४क.२.१२ शिक्षाविद्हरूमध्येबाट नेपाल सरकारले मनोनित गरेका दुईजना - सदस्य

४क.२.१३ सम्बन्धन प्राप्त उच्च माध्यमिक विद्यालयलाई चन्दा दिने चन्दादाता तथा संस्थापकहरू मध्येबाट नेपाल सरकारले मनोनित गरेका एकजना - सदस्य

∇४क.२.१४ नेपाल सरकारबाट मनोनीत व्यक्ति - सदस्य-सचिव

४क.३ सभाका मनोनित सदस्यहरूको पदावधि चार वर्षको हुनेछ र पदावधि समाप्त भएपछि निजहरू पुनः मनोनीत हुन सक्नेछन् ।

४क.४ सभाको बैठक सम्बन्धी कार्यविधि तोकिएबमोजिम हुनेछ ।

**♦४ख. सभाको काम, कर्तव्य र अधिकार** :

४ख.१ सभाको काम, कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ :-

४ख.१.१ परिषद्लाई मार्गदर्शन गर्ने,

∇ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधन ।

♦ दोस्रो संशोधनद्वारा थप ।

४ख.१.२ परिषद्को नीति निर्धारण गर्ने र त्यसको प्रभावकारी कार्यान्वयनको व्यवस्था गर्ने, गराउने,

४ख.१.३ उच्च माध्यमिक शिक्षाको गुणस्तरमा विकास भए नभएको मूल्याङ्कन गर्ने, गराउने,

४ख.१.४ परिषद्को वार्षिक बजेट तथा कार्यक्रम स्वीकृत गर्ने,

४ख.१.५ दीर्घकालीन योजना तयार गर्न लगाउने र त्यसको कार्यान्वयनको लागि आवश्यक व्यवस्था मिलाउने,

४ख.१.६ परिषद् अन्तर्गतका कुनै निकाय वा अधिकारीलाई आवश्यक निर्देशन दिने,

४ख.१.७ यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियममा तोकिएका अन्य कार्यहरू गर्ने, गराउने ।

♠५. **उच्च माध्यमिक शिक्षा परिषद्को गठन, काम, कर्तव्य र अधिकार** :

∇५.१. उच्च माध्यमिक शिक्षा सभाको कार्य सञ्चालन गर्नको लागि देहाय बमोजिमको एक उच्च माध्यमिक शिक्षा परिषद् गठन हुनेछ :-

५.१.१ सभाको अध्यक्ष - अध्यक्ष

५.१.२ सभाको उपाध्यक्ष - उपाध्यक्ष

५.१.३ सभाका सदस्यहरूमध्येबाट सभाको सिफारिसमा अध्यक्षले मनोनीत गरेका चारजना - सदस्य

५.१.४ सभाको सदस्य-सचिव - सदस्य-सचिव

५.२ परिषद्मा मनोनित सदस्यहरूको पदावधि चारवर्षको हुनेछ र पदावधि समाप्त भएपछि निजहरू पुनः मनोनित हुन सक्नेछन् ।

५.३ परिषद्को काम, कर्तव्य र अधिकार तोकिए बमोजिम हुनेछ ।

---

♠ दोस्रो संशोधनद्वारा संशोधित ।

∇ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधन ।

+५.३क परिषद्को उपाध्यक्षको काम, कर्तब्य, अधिकार र सेवाका अन्य शर्तहरू तोकिएबमोजिम हुनेछन् ।

५.४ ∞.....

५.५ परिषद्को बैठक सम्बन्धी कार्यविधि तोकिए बमोजिम हुनेछ ।

६. **समिति गठन गर्न सक्ने** :

६.१ परिषद्ले उच्च माध्यमिक शिक्षाको ∞.....परीक्षा सञ्चालन र सम्बन्धनका निमित्त एक वा एक भन्दा बढी समितिहरू गठन गर्न सक्नेछ ।

६.२ उपदफा ६.१ बमोजिम गठित समितिको गठनविधि, काम कर्तव्य र अधिकार परिषद्ले तोके बमोजिम हुनेछ ।

७. **परिषद् स्वशासित संगठित संस्था हुने:**

७.१ परिषद् अविच्छिन्न उत्तराधिकारवाला एक स्वशासित संगठित संस्था हुनेछ ।

७.२ परिषद्को कामको निमित्त आफ्नो एउटा छाप हुनेछ ।

७.३ परिषद्ले व्यक्ति सरह चल अचल सम्पत्ति प्राप्त गर्न, भोग गर्न, धितो बन्धक राख्न, बेचबिखन गर्न र अन्य किसिमले बन्दोवस्त गर्न सक्नेछ ।

७.४ परिषद्ले व्यक्ति सरह आफ्नो नाउँबाट नालिस उजूर गर्न र सो उपर पनि सोही नामबाट नालिस उजूर लाग्न सक्नेछ ।

७.५ परिषद्को केन्द्रीय कार्यालय काठमाडौं उपत्यकामा रहनेछ ।

८. **उच्च माध्यमिक विद्यालयमा भर्ना हुन चाहिने योग्यता:** माध्यमिक शिक्षा उत्तीर्ण परीक्षा (स्कूल लिभिङ्ग सर्टिफिकेट एक्जामिनेशन) वा सो सरह परीक्षा उत्तीर्ण भएका विद्यार्थी उच्च माध्यमिक विद्यालयमा भर्ना लिइन योग्य हुनेछन् ।

९. **उच्च माध्यमिक शिक्षाको मान्यता:** उच्च माध्यमिक शिक्षा परीक्षा उत्तीर्ण प्रमाणपत्रलाई नेपालका विश्वविद्यालयको प्रविणता प्रमाणपत्र तह उत्तीर्ण गरे सरह मान्यता प्राप्त हुनेछ ।



---

\+ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।

∞ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा झिकिएको ।

∞ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा झिकिएको ।

**+९क. पाठ्यक्रम स्वीकृति र पाठ्य पुस्तक निर्धारण** :

९क.१ परिषद्ले उच्च माध्यमिक शिक्षामा अध्यापन गराइने पाठ्यक्रम स्वीकृतिको लागि शिक्षा तथा खेलकुद मन्त्रालय समक्ष पेश गर्नु पर्नेछ ।

९क.२ उपदफा ९क.१ बमोजिम पेश भएको पाठ्यक्रम शिक्षा तथा खेलकुद मन्त्रालयले जाँचबुझ गरी स्वीकृत गर्न सक्नेछ ।

९क.३ उच्च माध्यमिक विद्यालयले उपदफा ९क.२ बमोजिम शिक्षा तथा खेलकुद मन्त्रालयले स्वीकृत गरेको पाठ्यक्रम अनुसार पठनपाठन गराउनु पर्नेछ ।

**१०. कर्मचारी सम्बन्धी व्यवस्थाः**

१०.१ परिषद्ले आवश्यक कर्मचारीहरूको व्यवस्था गर्न सक्नेछ ।

१०.२ परिषद्का कर्मचारीहरूको काम, कर्तव्य र अधिकार तोकिए बमोजिम हुनेछ ।

१०.३ परिषद्का कर्मचारीहरूको पारिश्रमिक, सेवाको शर्त एवं सुविधा तोकिएबमोजिम हुनेछ ।

**♦१०क. आर्थिक स्रोत जुटाउने अधिकारः** परिषद्ले आफ्नो काम सुचारुरूपले संचालन गर्न आवश्यक पर्ने रकमको लागि नेपाल सरकारको पूर्व स्वीकृति लिई ऋण लिन, अनुदान प्राप्त गर्न वा अन्य कुनै किसिमबाट आर्थिक स्रोत जुटाउन सक्नेछ ।

**११. परिषद्को कोषः**

११.१ परिषद्को एक छुट्टै कोष हुनेछ । सो कोषमा देहायका रकमहरू रहनेछन् :-

११.१.१ नेपाल सरकारबाट प्राप्त अनुदान,

११.१.२ चन्दाबाट प्राप्त रकम,

११.१.३ अन्य स्रोतबाट प्राप्त रकम ।

११.२ परिषद्को तर्फबाट गर्नु पर्ने सम्पूर्ण खर्चहरू उपदफा ११.१ बमोजिमको कोषबाट व्यहोरिनेछ ।

११.३ उपदफा ११.१ बमोजिमको कोषको संचालन तोकिए बमोजिम हुनेछ ।

---

+ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।

♦ दोस्रो संशोधनद्वारा थप ।

१२. **परिषद्को लेखा र लेखापरीक्षणः**

१२.१ परिषद्को लेखा नेपाल सरकारको प्रचलित ढाँचा र तरिका बमोजिम राखिनेछ ।

१२.२ परिषद्को लेखापरीक्षण महालेखा परीक्षकको विभागबाट हुनेछ ।

१२.३ नेपाल सरकारले परिषद्को हिसाब किताब सम्बन्धी कागजात नगदी र जिन्सी समेत जुनसुकै बखत जाँच्न सक्नेछ ।

१३. **प्रविणता प्रमाणपत्र तहका कक्षाहरू उच्च माध्यमिक विद्यालयमा स्थानान्तरण हुन सक्नेः**

१३.१ यो ऐन प्रारम्भ हुँदाका बखत ∇नेपालभित्रका विश्वविद्यालयहरू अन्तर्गत आंगिक तथा सम्बन्धन प्राप्त क्याम्पसकहरूमा संचालन भै रहेका प्रविणता प्रमाणपत्र तहका कक्षाहरू उच्च माध्यमिक विद्यालयमा स्थानान्तरण हुन सक्नेछन् ।

♣१३.२ विश्वविद्यालय सम्बन्धी प्रचलित कानुनमा जुनसुकै कुरा लेखिएको भएता पनि यो ऐन प्रारम्भ भएको क्षेत्रमा त्रिभुवन विश्वविद्यालय र अन्य विश्वविद्यालयहरूले प्रविणता प्रमाणपत्र तहको कक्षा संचालन गर्न कुनै शैक्षिक निकायलाई स्वीकृति वा सम्बन्धन दिन सक्ने छैन ।

♣१३क. **विशेष व्यवस्थाः** दफा १३ मा जुनसुकै कुरा लेखिएको भएता पनि यो ऐन प्रारम्भ भएको क्षेत्र वा क्षेत्रहरूमा यो दफा प्रारम्भ भएको मितिले चार वर्षसम्म त्रिभुवन विश्वविद्यालयले प्रविणता प्रमाणपत्र तहको कक्षा संचालन गर्न कुनै शैक्षिक निकायलाई स्वीकृति वा सम्बन्धन प्रदान गर्न वाधा पर्नेछैन ।

+१३ख. **सुपरीवेक्षण र अनुगमन गर्ने अधिकार :**

१३ख.१ यो ऐन र यस ऐन अन्तर्गत बनेको नियममा जुनसुकै कुरा लेखिएको भएतापनि शिक्षा विभागको महानिर्देशकलाई देहाय बमोजिमको अधिकार हुनेछ :-

१३ख.१.१ उच्च माध्यमिक विद्यालयको सुपरीवेक्षण र अनुगमन गर्ने, र

१३ख.१.२ उच्च माध्यमिक विद्यालयलाई नेपाल सरकारबाट उपलब्ध गराइने जुनसुकै रकमको व्यवस्थापन गर्ने ।

---

∇ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा संशोधन ।

♣ पहिलो संशोधनद्वारा थप ।

\+ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।

१४. **अधिकार प्रत्यायोजनः** परिषद्ले यो ऐन वा यस ऐन अन्तर्गत बनेका नियमबाट आफूलाई प्राप्त अधिकार मध्ये सबै वा केही अधिकार ♠क्षेत्रीय शिक्षा निर्देशक, ♠जिल्ला शिक्षा अधिकारी वा परिषद्को समिति वा अधिकृतलाई प्रत्यायोजन गर्न सक्नेछ ।

१५. **नेपाल सरकारले निर्देशन दिन सक्नेः**

१५.१ नेपाल सरकारले उच्च माध्यमिक शिक्षाको सम्बन्धमा परिषद्लाई समय समयमा निर्देशन दिन सक्नेछ ।

१५.२ उपदफा १५.१ बमोजिम दिइएको निर्देशनको पालना गर्नु परिषद्को कर्तव्य हुनेछ ।

१६. **नियम बनाउने अधिकारः** यो ऐनको उद्देश्य कार्यान्वयन गर्न नेपाल सरकारले नियम बनाउन सक्नेछ ।

१७. **विनियम बनाउने अधिकारः** यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमको अधीनमा रही परिषद्ले आफ्नो आन्तरिक काम कारबाहीहरू व्यवस्थित गर्नको निमित्त विनियम बनाउन सक्नेछ । +त्यसरी बनाइएको विनियम नेपाल सरकारबाट स्वीकृत भएपछि मात्र लागू हुनेछ ।

♦१८. **नेपाल सरकारसँग सम्पर्कः** परिषद्ले नेपाल सरकारसँग सम्पर्क राख्दा शिक्षा, संस्कृति तथा समाज कल्याण मन्त्रालय मार्फत राख्नु पर्नेछ ।



---

+ शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ द्वारा थप ।

♦ दोस्रो संशोधनद्वारा थप ।

**द्रष्टव्य** : शिक्षा तथा खेलकुद सम्बन्धी केही नेपाल ऐन संशोधन गर्ने ऐन, २०६३ ले देहायका शब्दहरुलाई देहाय बमोजिम रूपान्तरण गरेको छ :
"शिक्षा, संस्कृति तथा समाज कल्याण मन्त्रालय" भन्ने शब्दहरुको सट्टा "शिक्षा तथा खेलकुद मन्त्रालय"